# समुद्रमा घाइते, बिरामी र संकटग्रस्त जहाजका सशस्त्र सेनाका सदस्यहरूको अवस्था सुधार सम्बन्धी (दोस्रो) महासन्धि

## जेनेभा १२ अगस्त, १९४९

## (७ फेब्रुअरी, १९६४ मा नेपालले अनुमोदन गरेको)

**प्रस्तावना**

१८ अक्टोबर, १९०७ को दशौं हेग महासन्धिलाई संशोधन गर्ने उद्देश्यबाट १९०६ को जेनेभा महासन्धिका सिद्धान्तहरूलाई सामुद्रिक युद्धकलासँग अनुकूलन गर्ने प्रयोजनका लागि जेनेभामा २१ अप्रिलदेखि १२ अगस्त, १९४९ सम्म भएको कुटनीतिक सम्मेलनमा प्रतिनिधित्व गरेका सरकारहरूका अधोहस्ताक्षरी पूर्ण अधिकार सम्पन्न प्रतिनिधिहरू देहाय बमोजिम सहमत भएका छन् :

## परिच्छेद १
## सामान्य प्रावधानहरू

### धारा १

उच्च संविदाकारी पक्षहरू यस महासन्धिलाई सबै परिस्थितिहरूमा सम्मान गर्ने र सम्मान सुनिश्चित गर्ने वाचा गर्छन् ।

### धारा २

शान्तिकालमा कार्यान्वयन गरिने प्रावधानहरूका अतिरिक्त, कुनै एक पक्षले युद्धको अवस्थालाई मान्यता नदिएको स्थितिमा पनि वर्तमान महासन्धि दुई वा सोभन्दा बढी उच्च संविदाकारी पक्षहरूका बीच हुन सक्ने घोषित युद्ध वा अन्य कुनै सशस्त्र संघर्षका सबै घटनाहरूमा लागू हुनेछ ।

यो महासन्धि उच्च संविदाकारी पक्षको भू-भागको आंशिक वा पूर्ण कब्जामा लिइएका सबै घटनाहरूमा त्यस्तो कब्जा सशस्त्र प्रतिरोध विना भए पनि लागू हुनेछ ।

द्वन्द्वको एक शक्ति प्रस्तुत महासन्धिको पक्ष नभए तापनि, यो महासन्धिको पक्षधर रहेका शक्तिहरू आफ्ना पारस्परिक सम्बन्धहरूमा यसबाट बाँधिने छन् । यदि महासन्धिको पक्षधर नभएको शक्तिले

पनि यसका व्यवस्थाहरू स्वीकार गर्छ र लागू गर्छ भने, सो शक्तिसँगको सम्बन्धमा यस महासन्धिबाट तिनीहरू अझै बाँधिने छन् ।

## धारा ३

कुनै एक उच्च संविदाकारी पक्षको भू-भागमा रहेको अन्तर्राष्ट्रिय प्रकृति नभएको सशस्त्र संघर्षको हकमा संघर्षरत हरेक पक्ष देहायका प्रावधानहरू न्यूनतम रुपमा लागू गर्न बाध्य हुनेछ :-

(१) आफ्ना हतियारहरू बिसाएका र बिरामी, घाउचोट, थुना वा अन्य कुनै कारणले लड्न अक्षम सैन्य दलका सदस्य लगायत लडाईंमा सक्रिय सहभागी नरहेका व्यक्तिहरूलाई सबै परिस्थितिमा जाति, वर्ण, धर्म वा विश्वास, लिंग, जन्म वा सम्पत्ति वा अन्य त्यस्तै आधारमा कुनै प्रतिकूल विभेद नगरी मानवोचित व्यवहार गरिनेछ ।

यस लक्ष्यको प्राप्तिको लागि माथि उल्लिखित व्यक्तिहरूको हकमा देहायका कार्यहरू, जस्तोसुकै समयमा र जुनसुकै ठाउँमा पनि निषेधित छन् र रहनेछन् :-

(क) जीवन र शरीर उपर हिंसा, विशेषतः सबै खाले हत्या, अंगभंग, क्रूर व्यवहार र यातना,

(ख) बन्धक बनाउने,

(ग) व्यक्तिगत प्रतिष्ठा उपर आक्रमण, विशेषतः उपहास वा अपमानजनक व्यवहार,

(घ) सभ्य मानिसहरू अपरिहार्य भनी मान्यता प्राप्त सम्पूर्ण न्यायिक प्रत्याभूतिहरू प्रदान गर्दै नियमित प्रक्रियाद्वारा गठन गरिएको अदालतको पूर्व निर्णय बेगर सजाय तोक्ने र कार्यान्वयन गर्ने कार्य,

(२) घाइते, बिरामी र संकटग्रस्त जहाजमा परेकाहरूलाई जम्मा गरी हेरचाह गरिनेछ ।

रेडक्रसको अन्तर्राष्ट्रिय समिति जस्तो एउटा निष्पक्ष मानवीय संस्थाले संघर्षरत पक्षहरूलाई आफ्नो सेवा उपलब्ध गराउन सक्नेछ ।

संघर्षरत पक्षहरूले विशेष सम्झौताद्वारा प्रस्तुत महासन्धिका प्रावधानहरू पूर्ण वा आंशिक रुपमा लागू गर्न थप प्रयास गर्नुपर्नेछ ।

उपर्युक्त प्रावधानहरू लागू भएको कारणले संघर्षका पक्षहरूको कानुनी हैसियतमा असर पर्ने छैन ।

## धारा ४

संघर्षरत प्रक्षहरूका थल र जल सेनाका बीच लडाई भएको अवस्थामा प्रस्तुत महासन्धिका प्रावधानहरू जहाजमा सवार रहेका सेनाहरूलाई मात्र लागू हुनेछन् ।

समुद्र तटमा रहेका सेनाहरू तत्काल रणभूमिमा रहेका सशस्त्र सेनाका घाइते र बिरामीहरूको अवस्था सुधारसम्बन्धी १२ अगस्त, १९४९ मा भएको जेनेभा महासन्धिका प्रावधानहरूको अधीन रहनेछन् ।

## धारा ५

तटस्थ राष्ट्रहरूले उनीहरूको भू-भागमा प्राप्त हुन आएका वा रोकिएका घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरूलाई र संघर्षरत पक्षहरूका चिकित्सा कर्मचारीहरू र सैन्य दलका धार्मिक पूजारीका साथै, मृत व्यक्तिहरूको हकमा प्रस्तुत महासन्धिका प्रावधानहरू समान रुपमा लागू हुनेछ ।

## धारा ६

धाराहरू १०, १८, ३१, ३८, ३९, ४०, ४३ र ५३ मा प्रष्ट रुपमा व्यवस्था गरिएका सम्झौताहरूका अतिरिक्त, उच्च संविदाकारी पक्षहरूले अलग्गै व्यवस्था गर्न उपयुक्त देखेका, सम्पूर्ण विषयहरूमा अन्य विशेष सम्झौताहरू गर्न सक्नेछन् । कुनै पनि विषेश सम्झौताले यी महासन्धिले परिभाषित घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरू र चिकित्सा कर्मचारी दलका सदस्यहरू वा धार्मिक पूजारीहरूको अवस्थालाई प्रतिकूल प्रभाव पार्ने छैन न त यसले उनीहरूलाई महासन्धिले प्रदान गरेका अधिकारहरूलाई सीमित गर्नेछ ।

माथि उल्लिखित वा पछि गरिने सम्झौताहरूमा स्पष्टतः अन्यथा व्यवस्था भएमा वा संघर्षरत कुनै एक वा अर्को पक्षले घाइते, बिरामी र संकटग्रस्त जहाजमा परेका मानिसहरू, चिकित्सा दलका कर्मचारी र धार्मिक पूजारीहरूको हकमा थप अनुकूल व्यवस्था गरेमा बाहेक प्रस्तुत महासन्धि उनीहरूको हकमा लागू रहेसम्म यस्ता सम्झौताहरूबाट प्राप्त हुने लाभ प्राप्त गरी रहनेछन् ।

## धारा ७

घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरू साथै चिकित्सा दलका सदस्यहरू र धार्मिक पूजारीहरूले प्रस्तुत महासन्धिद्वारा तथा पूर्ववर्ती धारामा उल्लेख भएअनुसारको कुनै विशेष सम्झौताहरू भएमा सोबाट समेत उनीहरूको लागि सुरक्षित गरिएका अधिकारहरू कुनै पनि हालतमा आंशिक वा पूर्ण रुपमा परित्याग गर्न सक्ने छैनन् ।

## धारा ८

प्रस्तुत महासन्धि संघर्षरत पक्षहरूको हित संरक्षण गर्ने दायित्व भएका संरक्षक शक्तिहरूको सहयोग र निगरानीमा लागू गरिनेछ । यस प्रयोजनका लागि रक्षक शक्तिहरूले आफ्ना कुटनीतिक वा वाणिज्य दुतावासका कर्मचारीहरूका अतिरिक्त आफ्नै नागरिकहरू वा अन्य तटस्थ राष्ट्रका नागरिकहरू मध्येबाट प्रतिनिधिहरू नियुक्त गर्न सक्नेछन् । यस्ता प्रतिनिधिहरूको नियुक्ति जुन शक्तिसँग उनीहरूले कार्य गर्नुपर्ने हो त्यस्तो शक्तिको सहमतिको अधीनस्थ हुनेछ ।

संघर्षरत पक्षहरूले रक्षक व्यक्तिहरूका प्रतिनिधिहरू वा दूतहरूको कामलाई समेत भएसम्म बढी सहज बनाउनेछन् ।

रक्षक शक्तिहरूका प्रतिनिधिहरू वा दूतहरूले कुनै पनि हालतमा प्रस्तुत महासन्धि अन्तरगतको उद्देश्यलाई अतिक्रमण गर्ने छैनन् । उनीहरूले खास गरेर आफू काम गर्ने राष्ट्रको अत्यन्त जरुरी सुरक्षा सम्बन्धी आवश्यकतालाई ध्यान दिनेछन् । अत्यन्त जरुरी सैन्य आवश्यकताद्वारा जरुरी मानिएको अवस्थामा मात्र उनीहरूको काम कारवाहीलाई अपवादको रुपमा र अस्थायी उपाय मानी नियन्त्रित गरिनेछ ।

## धारा ९

प्रस्तुत महासन्धिका प्रावधानहरूले रेडक्रसको अन्तर्राष्ट्रिय समिति वा अन्य कुनै निष्पक्ष मानवीय संस्थाले सम्बन्धित संघर्षरत पक्षहरूको सहमतिको अधीनमा घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरू, चिकित्सा टोलीका कर्मचारीहरू र धार्मिक पूजारीहरूको रक्षा र तिनीहरूको उद्धारको लागि संचालन गर्न सकिने मानवीय गतिविधिहरूमा कुनै व्यवधान खडा गर्ने छैनन् ।

## धारा १०

उच्च संविदाकारी पक्षहरू कुनै पनि समयमा निष्पक्षता तथा दक्षताको सबै प्रत्याभूति दिने कुनै संस्थालाई प्रस्तुत महासन्धि अन्तर्गत रक्षक राष्ट्रहरूले पालन गर्नुपर्ने कर्तव्यहरू सुम्पन सहमत हुन सक्नेछन् ।

चाहे जुनसुकै कारणले होस् घाइते, बिरामी र संकटग्रस्त जहाजमा परेका मानिसहरू वा चिकित्सा टोलीका कर्मचारीहरू वा धार्मिक पूजारीहरू रक्षक शक्ति राष्ट्रका वा माथिको पहिलो अनुच्छेदमा उल्लिखित कुनै संस्थाको कुनै काम कारवाहीबाट लाभान्वित नभएमा वा लाभ पाउन छाडेमा थुनामा राख्ने शक्तिले संघर्षरत पक्षहरूद्वारा तोकिएको कुनै संरक्षक शक्तिले प्रस्तुत महासन्धि

अन्तरगत गर्नुपर्ने कार्यहरू सम्पन्न गर्नको लागि तटस्थ राष्ट्रलाई वा त्यस्तो कुनै संस्थालाई अनुरोध गर्नेछ।

यदि तदनुसार सुरक्षाको व्यवस्था गर्न नसकिएमा, थुनामा राख्ने शक्तिले यस धाराका व्यवस्थाहरूको अधीनमा रही, प्रस्तुत महासन्धि अन्तरगत संरक्षक शक्तिहरूद्वारा गरिने मानवीय कार्यहरूको जिम्मा लिन, रेडक्रसको अन्तर्राष्ट्रिय समिति जस्ता मानवीय संस्थालाई अनुरोध गर्ने वा गरेको अनुरोधलाई स्वीकार गर्नेछ।

सम्बन्धित शक्तिद्वारा निमन्त्रण गरिएको वा आफैले यी प्रयोजनहरूको लागि आफूलाई प्रस्तुत गर्ने कुनै तटस्थ राष्ट्र वा संघ/संगठनले प्रस्तुत महासन्धिद्वारा संरक्षित व्यक्तिहरूलाई आश्रयमा राख्ने संघर्षरत पक्षप्रति जिम्मेवारीपूर्वक व्यवहार गर्नुपर्ने छ र उपयुक्त देखिएका कार्यहरूको जिम्म लिई निष्पक्ष रुपमा सम्पन्न गर्न सक्षम रहेको पर्याप्त विश्वास दिलाउनु पर्नेछ।

सामरिक घटनाहरूको कारणले विशेष गरेर जहाँ पूरा वा अधिकांश भू-भाग कब्जामा परेको कारणले कुनै एक शक्तिको अर्को शक्ति वा यसको सहयोगी शक्तिहरूसँग वार्ता गर्ने स्वतन्त्रता, अस्थायी रुपमा भए पनि नियन्त्रित रहेको हुन्छ, त्यस्ता शक्तिहरूको बीच विशेष सम्झौता गरेर माथि उल्लिखित प्रावधानहरूलाई कम गरिने छैन।

प्रस्तुत महासन्धिमा जहाँ संरक्षण शक्तिबारे उल्लेख भएको छ, प्रस्तुत धाराको अर्थमा यस्तो उल्लेख वैकल्पिक संगठनहरूको हकमा पनि लागू हुनेछ। संरक्षित व्यक्तिहरूको हितको लागि तिनीहरूको सल्लाह धारा ११ आवश्यक देखेको स्थितिमा विशेष गरेर जहाँ प्रस्तुत महासन्धिका प्रावधानहरूको प्रयोग वा व्याख्यामा संघर्षरत पक्षहरूबीच मतभेद भएमा घटनाहरूमा रक्षक शक्तिहरूले त्यस्ता मतभेदको समाधान गर्ने प्रयोजनका लागि आफ्नो असल प्रभाव (Good Offices) को उपयोग गर्नेछन्।

यस उद्देश्यका लागि प्रत्येक रक्षक शक्तिले कुनै एक पक्षको आमन्त्रणमा वा आफ्नै पहलमा, संघर्षरत पक्षहरूलाई उनीहरूको प्रतिनिधिहरूको, खास गरेर घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरू, चिकित्सा दलका सदस्यहरू र धार्मिक पूजारीहरूप्रति जिम्मेवार भएका अधिकृतहरूको भेला उपयुक्त रुपमा छनौट गरिएको सम्भवत कुनै तटस्थ भू-भागमा गर्न प्रस्ताव गर्नेछन्। यस उद्देश्यका लागि तिनीहरू समक्ष प्रस्तुत गरिएका प्रस्तावहरूलाई संघर्षरत पक्षहरू कार्यान्वयन गर्न बाध्य हुनेछन्। यदि आवश्यक भएमा संरक्षक शक्ति राष्ट्रहरूले कुनै तटस्थ शक्ति राष्ट्रका कुनै व्यक्ति वा रेडक्रसको अन्तर्राष्ट्रिय समितिद्वारा खटाइएको कुनै व्यक्तिको नाम संघर्षरत पक्षहरूको स्वीकृतिका लागि प्रस्ताव गर्न सक्नेछन् जसलाई यस्तो बैठकमा भाग लिन आमन्त्रण गरिनेछ।

## परिच्छेद २

## घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरू

### धारा १२

सशस्त्र सेनाका सदस्यहरू र यस पछिका धारामा उल्लेख भएका अन्य व्यक्तिहरूलाई, जो समुद्रमा छन् र जो घाइते, बिरामी वा संकटग्रस्त छन्, सबै अवस्थामा आदरपूर्वक व्यवहार र सुरक्षा प्रदान गरिनेछ । "संकटग्रस्त जहाजमा परेका" भन्ने शब्दले कुनै कारणले संकटमा परेको जहाजलाई जनाउँछ र विमानद्वारा वा विमानबाट समुद्रमा बलपूर्वक अवतरण गरेकोलाई समेत समावेश गर्छ ।

उनीहलाई लिंग, वर्ण, राष्ट्रियता, धर्म, राजनीतिक विचार वा अन्य त्यस्तै आधारमा कुनै भेदभाव नगरी संघर्षरत कुनै पक्षको नियन्त्रण भए पनि मानवोचित व्यवहार र हेरविचार गरिनेछ । खास गरेर तिनीहरूको ज्यान लिने कुनै प्रयास वा शारीरिक क्षति हुने कुनै पनि कार्य पूर्णतः प्रतिबन्धित हुनेछ, खास गरेर उनीहरूलाई मारिने वा समाप्त गरिने वा यातना दिइनेछैन वा उनीहरूमाथि जैविक प्रयोग गरिने छैन । उनीहरूलाई जानी जानी चिकित्सा सम्बन्धी सुविधा वा हेरविचार विना राखिने छैन न त उनीहरूलाई महामारीमा पार्ने वा संक्रामक रोग लाग्ने अवस्थाको सृजना गरिनेछ ।

केवल अविलम्व उपचार गरिनु पर्ने चिकित्सकीय कारणहरू मात्र, प्रदान गरिने उपचारको प्राथमिकता तोक्ने आधार हुनेछन् ।

महिलाहरूलाई गरिने व्यवहार उनीहरूको लिंगको कारणले विचार पुऱ्याउनु पर्ने सबै कुराहरूलाई ध्यानमा राखी गरिनेछ ।

### धारा १३

प्रस्तुत महासन्धि देहायका वर्गहरूमा पर्ने समुद्रमा भएका घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरूको हकमा लागू हुनेछ :-

(१) संघर्षरत पक्षको सशस्त्र सेनाका सदस्यहरू र नागरिक सेनाका सदस्यहरू वा यस्तो सशस्त्र बलको अंगको रुपमा रहेका स्वयम्सेवक दस्ताहरू,

(२) संघर्षरत पक्षको भू-भाग नै कब्जामा लिएको भए पनि अधीनस्थ र आफ्नो भू-भाग भित्र वा बाहिर कियाशील भैरहेको कुनै पक्षको संगठित प्रतिरोध अभियान लगायत अन्य नागरिक सेनाका सदस्यहरू र अन्य स्वयम्सेवक दस्ताका सदस्यहरू, तर यस्ता संगठित

प्रतिरोध अभियान लगायत नागरिक सेना वा स्वयम्‌सेवक दस्ताहरूले देहायका शर्तहरू पूरा गर्नुपर्नेछ :-

(क) आफ्ना मातहतमा रहेका सहायकहरूका प्रति जिम्मेवार व्यक्तिबाट निर्देशित रहेको,

(ख) टाढैबाट पहिचान गर्न सकिने स्पष्ट चिन्ह प्रयोग गरेको,

(ग) खुल्ला रुपमा हातहतियार बोकेको,

(घ) युद्धसम्बन्धी कानुन र प्रथा बमोजिम तिनीहरूमा कारवाहीहरू संचालन भएको,

(३) थुनामा राख्ने शक्ति राष्ट्रद्वारा मान्यता प्रदान नगरिएको कुनै सरकार वा अधिकारीप्रति निष्ठा राख्ने नियमित सशस्त्र सेनाका सदस्यहरू ।

(४) वास्तवमा सशस्त्र सेनाको सदस्य नरहेरै पनि उनीहरूसँग रहेका व्यक्तिहरू, जस्तै सैनिक विमान चालक दलका नागरिक सदस्यहरू, युद्ध सम्वाददाताहरू, आपूर्ति गर्ने ठेकेदारहरू, सशस्त्र सेनाको कल्याणको लागि जिम्मेवार रहेका श्रम इकाइहरू वा सेवाका सदस्यहरू, तर उनीहरूले आफू संलग्न हुने सशस्त्र सेनाबाट त्यस्तो अख्तियारी पाएको हुनुपर्नेछ ।

(५) पानी जहाजका चालक दलका सदस्यहरू र तिनका कप्तान, मार्गदर्शक तथा प्रशिक्षार्थीहरू एवम् संघर्षरत पक्षको नागरिक हवाईजहाजका कर्मचारीहरू, जसले अन्तर्राष्ट्रिय कानुनका अन्य कुनै व्यवस्थाहरू अन्तरगत बढी सुविधाजनक व्यवहार प्राप्त गरेका छैनन् ।

(६) आफूलाई नियमित सशस्त्र इकाईहरूमा संगठित हुने समय प्राप्त नभए पनि शत्रुको आगमन हुनासाथ आक्रमक शक्तिको प्रतिकार गर्न स्वःस्फूर्त रुपमा हतियार उठाउने कब्जामा नपरेका भू-भागका बासिन्दाहरू, यदि उनीहरूले खुला रुपमा हातहतियार बोक्छन् र युद्धका कानुनहरू र प्रथाहरूको आदर गर्छन् भने ।

## धारा १४

युद्धावस्थामा रहेको कुनै एक पक्षका सबै युद्धपोतहरूलाई यदि घाइते, बिरामीहरू स्थानान्तरण गर्ने ठिक अवस्थामा छन् र युद्धपोतले आवश्यक औषधोपचारको लागि पर्याप्त सुविधाहरू उपलब्ध गराउन सक्छन् भने अस्पतालको रुपमा रहेका सैनिक पानी जहाज, कुनै सहायता गर्ने संस्था वा गैरसकारी व्यक्तिहरूको स्वामित्वमा रहेका अस्पतालयुक्त पानी जहाजहरू, व्यापारिक जहाजहरू,

साना ठूला समुद्री जहाजहरू, अन्य नौकामा रहेका घाइते, बिरामीहरू संकटग्रस्त जहाजका मानिसहरूलाई ती जुनसुकै राष्ट्रियताका भए पनि सुपुर्दगी गर्न माग गर्ने अधिकार रहनेछ ।

## धारा १५

यदि घाइते, बिरामी वा संकटग्रस्त जहाजका मानिसहरूलाई कुनै तटस्थ युद्धपोतमा वा तटस्थ सैनिक विमानमा राखेर लगिन्छ भने तिनीहरूले त्यसपछि आवश्यक ठानेअनुसार युद्धसम्बन्धी कारवाहीमा भाग लिन सक्दैनन् भन्ने कुरा अन्तर्राष्ट्रिय कानुनले सुनिश्चित गर्नेछ ।

## धारा १६

शत्रुको कब्जामा परेका युद्धरत पक्षका घाइते, बिरामीहरू वा संकटग्रस्त जहाजका मानिसहरू धारा १२ का प्रावधानहरूको अधीन रही युद्धबन्दीका रुपमा रहने छन् र युद्धबन्दीहरूसँग सम्बन्धित अन्तर्राष्ट्रिय कानुनका प्रावधानहरू तिनीहरूको हकमा लागू हुनेछन् । कब्जाकर्ताले तिनीहरूलाई आफ्नो कब्जामा राखी राख्न वा कब्जाकर्ताको आफ्नै मुलुकको कुनै बन्दरगाहसम्म, कुनै तटस्थ बन्दरगाहसम्म, वा शत्रुकै राज्यक्षेत्रमा रहेको कुनै बन्दरगाहसम्म पुऱ्याउन उपयुक्त हुन्छ, भन्ने बारेमा अवस्थाअनुसार निर्णय गर्न सक्नेछ । अन्तिम अवस्थाको हकमा यसरी आफ्ना गृह मुलुकमा फर्काइएका युद्धबन्दीहरूले सो युद्धको अवधिभरी सेवा गर्न सक्ने छैनन् ।

## धारा १७

स्थानीय अधिकारीहरूको सहमतिमा तटस्थ बन्दरगाहहरूमा अवतरण भएका घाइते, बिरामी वा संकटग्रस्त जहाजका मानिसहरूलाई तटस्थ र युद्धावस्थामा रहेका शक्ति राष्ट्रहरूले परस्परमा अन्यथा व्यवस्थाहरू गर्न असफल भएको अवस्थामा, अन्तर्राष्ट्रिय कानुनले आवश्यक ठानेमा उल्लिखित मानिसहरू युद्धको संचालनमा पुनः भाग लिन नसक्ने गरी तटस्थ शक्ति राष्ट्रद्वारा निगरानी गरिने छ ।

अस्पतालमा रहँदाका र नजरबन्द रहँदाका खर्चहरू घाइते, बिरामीहरू र संकटग्रस्त जहाजका मानिसहरू आश्रित रहेको राष्ट्रद्वारा व्यहोरिनेछ ।

## धारा १८

प्रत्येक युद्धपछि संघर्षरत पक्षहरूले, विना विलम्ब संकटग्रस्त जहाजका मानिसहरू, घाइतेहरू र बिरामीहरूलाई खोज तलास गर्न र जम्मा गर्न, तिनीहरूलाई लुटपाट र दुर्व्यवहारबाट जोगाउन, तिनीहरूको पर्याप्त हेरचाह सुनिश्चित गर्न र मृतकहरूको खोजी गर्न र तिनीहरूको सम्पत्ति अपरहणलाई रोकथाम गर्न सबै सम्भव उपायहरू गर्नेछन् ।

जब परिस्थितिहरू अनुकूलित हुन्छन्, संघर्षरत पक्षहरूले घाइते र बिरामीहरूलाई घेरा हालिएको वा घेरिएको क्षेत्रबाट समुद्रको बाटो भएर स्थानान्तरणको लागि र सो क्षेत्रमा जान लागेका चिकित्सा दल र धार्मिक दलका सदस्यहरू र उपकरणहरू सार्नका लागि स्थानीय स्तरमा प्रबन्ध गर्ने छन् ।

## धारा १९

संघर्षरत पक्षहरूले आफ्नो कब्जामा परेका विपक्षीका संकटग्रस्त जहाजका मानिस, घाइते, बिरामी वा मृतकको सम्बन्धमा जति सक्दो चाँडो उनीहरूको सनाखत गर्न सहायक हुने विवरणहरूको अभिलेख तयार गर्ने छन् । सम्भव भएसम्म यस्ता अभिलेखहरूमा निम्न कुराहरू समावेश गर्नु पर्नेछ :-

(क) निज आश्रित रहेको शक्तिको नाम,

(ख) सेना, गण, व्यक्तिगत वा क्रम संख्या,

(ग) थर,

(घ) पहिलो नाम वा नामहरू,

(ङ) जन्म मिति,

(च) निजको परिचयपत्र वा बिल्ला (डिस्क) मा उल्लिखित अन्य कुनै विवरण,

(छ) पक्राउमा परेको वा मृत्यु भएको मिति र ठाउँ,

(ज) घाउहरू वा बिरामी वा मृत्युको कारण सम्बन्धी विवरणहरू ।

उपर्युक्त उल्लिखित जानकारी यथाशिघ्र युद्धबन्दीहरूलाई गरिने व्यवहार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धिको धारा १२२ मा वर्णित सूचना निकायमा प्रेषित गरिनेछ, जसले यो सूचना संरक्षक शक्तिको र केन्द्रीय युद्धबन्दी निकायको मध्यस्थको माध्यमबाट आश्रित रहेको राष्ट्रसम्म पुऱ्याउनेछ ।

संघर्षरत पक्षहरूले मृत्यु प्रमाण पत्रहरू वा मृतकहरूको रीतपूर्वक प्रमाणित सूचीहरू तयार गरी सोही निकायको माध्यमबाट एक अर्कालाई प्रेषित गर्ने छन् । त्यस्तै गरी सोही निकायको माध्यमबाट तिनीहरूले मृतकसँग फेला परेको दोहोरो सनाखत बिल्ला (डिस्क) को आधा भाग वा एक्लो बिल्ला (डिस्क) भएमा परिचय बिल्ला (डिस्क), नजिकको सम्बन्धीलाई महत्वपूर्ण हुने अन्तिम इच्छापत्रहरू वा अन्य कागजातहरू, नगद र सामान्यतया आन्तरिक वा भावनात्मक महत्व भएका सबै सामग्रीहरू संकलन गरी पठाउने छन् । सनाखत गर्न नसकिएका सामग्रीहरूका साथै,

यी सामग्रीहरूलाई सिलबन्दी पोकाहरूमा राखेर मृतकका आफन्तले मृतकको सनाखतका लागि आवश्यक पर्ने सम्पूर्ण विवरण खुल्ने सूचीहरू तथा पुलिन्दामा रहेका मालहरूको पूर्ण विवरण समेत संलग्न गरी पठाइनेछ ।

## धारा २०

संघर्षरत पक्षहरूले परिस्थितिले अनुमति दिएसम्म समुद्रमा मृतकको लाश छुट्टाछुट्टै गाड्नु भन्दा पहिले मृत्यु यकिन गर्न, सनाखत गर्न र प्रतिवेदन तयार गर्नको लागि यथासम्भव मृत शरीरको, सम्भव भए, चिकित्सकद्वारा सावधानपूर्वक परीक्षण गराउने छन् । दोहोरो परिचय बिल्ला (डिस्क) प्रयोग भएको भए बिल्लाको आधा भाग मृत शरीरसँगै रहनुपर्छ ।

यदि मृतकको लाशलाई भूमिमा ओरालिएमा जमिनमाथि रहेका सशस्त्र सेनाका घाइते र बिरामीहरूको अवस्थामा सुधारबारे १२ अगस्त, १९४९ को जेनेभा महासन्धिका प्रावधानहरू लागू हुनेछन् ।

## धारा २१

संघर्षरत पक्षहरूले तटस्थ व्यापारिक जहाजहरू, ठूला साना समुद्री जहाजहरू र नौकाहरूका प्रमुख चालकहरूलाई घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरूलाई जहाजमा बोक्न र हेरचाह गर्नका लागि तथा मृतकहरूको संकलन गर्नको लागि उदारता देखाउन अनुरोध गर्न सक्नेछन् ।

यस्तो अनुरोधप्रति सकारात्मक भई सहयोग गर्ने कुनै पनि प्रकारका पानी जहाजहरू र आफ्नै स्वेच्छाले घाइते, बिरामी वा संकटग्रस्त जहाजका मानिसहरूलाई संकलन गर्ने जहाजहरूले यस्तो सहायता सम्पादन गर्नको लागि विशेष सुरक्षा र सुविधाहरू उपभोग गर्न पाउनेछन् ।

यस्तो ढुवानी गरेको कारणले कुनै पनि हालतमा तिनीहरूलाई कब्जामा लिइने छैन । तर यसबारे अन्यथा बचन नदिएको स्थितिमा तिनीहरूले तटस्थताको कुनै उल्लंघन गरेमा तिनीहरूलाई कब्जा गर्न सकिनेछ ।

## परिच्छेद ३

## अस्पतालयुक्त पानी जहाजहरू

### धारा २२

सैनिक अस्पतालयुक्त पानी जहाजहरू अर्थात घाइते, बिरामी र दुर्घटनाग्रस्त जहाजका मानिसहरूलाई विशेष रुपमा र पूर्ण रुपमा मद्दत गर्ने, तिनीहरूको उपचार गर्ने र तिनीहरूलाई ओसार-पसार गर्ने प्रयोजनका लागि शक्ति राष्ट्रहरूबाट निर्माण वा सुसज्जित गरिएका जहाजहरूलाई कुनै पनि हालतमा आक्रमण वा कब्जा गरिने छैन । बरु तिनीहरूलाई सदैव आदर र रक्षा गरिनेछ । तर सोको लागि यस्ता जहाजहरूलाई काममा लगाउनुभन्दा दश दिन अगावै तिनीहरूका नाम र विवरणहरूबारे संघर्षरत पक्षहरूलाई सूचित गरेको हुनुपर्छ ।

सूचनामा उल्लेख हुनुपर्ने विशेषताहरूमा पञ्जीकृत कूल टनभार, जहाजको अगाडि पछाडि भागको लम्बाई र मस्तुलहरू र धुँवादानीहरूको संख्याहरूसमावेश हुनुपर्नेछ।

### धारा २३

युद्ध मैदानमा रहेका सशस्त्र सेनाका घाइते  र बिरामीको अवस्था सुधार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धि अन्तर्गतको सुरक्षाको हकदार भएका समुद्र तटमा रहेका संस्थापनहरूको वमबारी वा समुद्रबाट गरिने आक्रमणबाट सुरक्षा गरिनेछ।

### धारा २४

यदि तिनीहरू आश्रित रहेका संघर्षरत पक्षले तिनीहरूलाई औपचारिक अधिकार प्रदान गरेको भए र सूचना दिने सम्बन्धी धारा २२ का प्रावधानहरूको अनुपालन गरी सकेको भए राष्ट्रिय रेडक्रस सोसाइटीहरूद्वारा, आधिकारिक मान्यता प्राप्त गरेका राहत समितिहरूद्वारा वा गैरसकारी व्यक्तिहरूद्वारा उपयोग गरिएका जहाजी अस्पतालहरूलाई पनि सैनिक अस्पतालयुक्त जहाजहरूलाई प्राप्त हुने सुरक्षा जस्तै सुरक्षा प्राप्त हुनेछ र तिनीहरू कब्जा हुनुबाट मुक्त रहनेछन् ।

ती जहाजहरूलाई सुसज्जित गर्दा र प्रस्थान गर्दा तिनीहरू तिनको नियन्त्रणमा रहेका थिए भनी, जिम्मेवार पदाधिकारीहरूले प्रमाणपत्र प्रदान गरेको हुनुपर्छ ।

### धारा २५

आफ्ना सरकारहरूको पूर्व सहमति लिएर र सम्बन्धित संघर्षरत पक्षबाट अख्तियारी प्राप्त गरेर साथै धारा २२ का सूचना दिने सम्बन्धी प्रावधानहरूको अनुपालना भैसकेको अवस्थामा यदि अस्पतालयुक्त जहाजहरूले आफूलाई संघर्षरत पक्षहरूमध्ये कुनै एकको नियन्त्रणमा सुम्पेका रहेछन्

भने तटस्थ मुलुकहरूका राष्ट्रिय रेडक्रस सोसाइटीहरू, आधिकारिक मान्यता प्राप्त राहत सोसाइटीहरू वा गैरसरकारी व्यक्तिहरूद्वारा प्रयोग गरिएका अस्पतालयुक्त जहाजहरूले पनि सैनिक अस्पतालयुक्त जहाजले पाउने सुरक्षा सरह पाउनेछन् र तिनीहरू कब्जा पर्नबाट मुक्त रहनेछन् ।

## धारा २६

जहाँसुकै संचालन भैरहेका, जुनसुकै टनभार भएका अस्पतालयुक्त जहाजहरू र तिनका जीवन रक्षक डुंगाहरूलाई धाराहरू २२, २४ र २५ मा उल्लिखित संरक्षण लागू हुनेछ । तथापि सर्वाधिक आराम र सुरक्षा सुनिश्चित गर्नका लागि घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरूलाई लामो दूरीसम्म र खुला समुद्रमा ओसार-पसार गर्दा संघर्षरत पक्षहरूले २,००० कूल टन भारभन्दा माथिका अस्पतालयुक्त जहाजहरूलाई मात्र प्रयोग गर्ने प्रयास गर्नेछन् ।

## धारा २७

धाराहरू २२ र २४ मा व्यवस्था गरिएका समान अवस्थाहरू अन्तरगत समुद्र तटवर्ती उद्धार कारवाहीका लागि राज्यद्वारा वा आधिकारिक मान्यता प्राप्त जीवन रक्षक डुंगाहरूका संगठनद्वारा काममा लगाइएका साना जहाजहरूलाई पनि संचालन सम्बन्धी आवश्यकताहरूले अनुमति प्रदान गरेको हदसम्म सम्मान र सुरक्षा गरिनेछ ।

यस्ता जहाजहरूद्वारा आफ्ना पूर्णतया मानवोचित उद्देश्यहरूका लागि प्रयोग गरिएका, समुद्र तटवर्ती स्थायी प्रतिष्ठानहरू माथि पनि सम्भव भएसम्म यही नियम लागू हुनेछ ।

## धारा २८

युद्धपोतमाथि नै लडाइँ प्रारम्भ भएमा, बिरामीहरू रहेका कोठाहरूको सम्मान गरिनेछ र सम्भव भएसम्म तिनीहरूलाई अलग्गै जोगाइनेछ । बिरामीका कोठाहरू र तिनका उपकरणहरू युद्धको कानुनका अधिन रहने छन् तर घाइते र बिरामीका लागि तिनको आवश्यकता रही रहेसम्म, सोही प्रयोजन बाहेक अन्यत्र प्रयोग गरिने छैन । तथापि जुन कमाण्डरको कब्जामा तिनीहरू परेका छन् उसले त्यहाँ रहेका घाइते र बिरामीहरूको समुचित हेरचाहको सुनिश्चित गरी सैनिक दृष्टिले अत्यावश्यक परेमा, तिनीहरूलाई अन्य प्रयोजनहरूका लागि प्रयोग गर्न सक्नेछ ।

## धारा २९

कुनै बन्दरगाह दुश्मनको हातमा परेको खण्डमा त्यहाँ रहेको अस्पतालयुक्त जहाजलाई उक्त बन्दरगाह छाडेर अन्यत्र जान पाउने अधिकार प्रदान गरिनेछ ।

## धारा ३०

धारा २२, २४, २५ र २७ मा उल्लिखित पानी जहाजहरूले, राष्ट्रियताको आधारमा भेदभाव नगरी घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरूलाई राहत र सहायता प्रदान गर्ने छन् ।

उच्च संविदाकारी पक्षहरूले यी पानी जहाजहरूलाई अन्य कुनै सैनिक प्रयोजनको लागि प्रयोग नगर्ने संकल्प गर्दछन् ।

यस्ता पानी जहाजहरूले लडाकुहरूको आवागमनलाई कुनै पनि तरिकाले अवरोध पुऱ्याउने छैनन् । युद्धको समयावधिमा र त्यसपछि आफ्नै जोखिममा तिनीहरूले कार्य गर्नेछन् ।

## धारा ३१

संघर्षरत पक्षहरूलाई धाराहरू २२, २४, २५ र २७ मा उल्लिखित पानी जहाजहरूलाई नियन्त्रण गर्न र खानतलासी गर्न पाउने अधिकार हुनेछ । परिस्थितिको गम्भीरताले गर्दा आवश्यक भएमा तिनीहरूले यस्ता पानी जहाजहरूबाट मद्दत लिन इन्कार गर्न सक्नेछन्, तिनलाई अन्यत्र जान आदेश दिन सक्नेछन्, कुनै निश्चित बाटोमा जान बाध्य पार्न सक्नेछन्, तिनका संचारका बेतार वा अन्य माध्यमहरूको प्रयोगलाई नियन्त्रण गर्न सक्नेछन् र हस्तक्षेप गरेको समयदेखि ७ दिनसम्म नबढाई तिनलाई रोकी राख्न सक्नेछन् ।

तिनीहरूले जहाजमा एउटा आयुक्त अस्थायी रुपमा राख्न सक्नेछन् जसको एकमात्र काम पूर्ववर्ती अनुच्छेदहरूका प्रावधानहरूको सन्दर्भमा दिइएका आदेशहरूको पालना भएको छ भन्ने बारे ध्यान दिनुहुनेछ ।

सम्भव भएसम्म संघर्षरत पक्षहरूको अस्पतालयुक्त जहाजको अभिलेखमा सो जहाजका कप्तानलाई तिनीहरूले दिएका आदेशहरू, निजले बुझ्ने भाषामा उल्लेख गर्नुपर्छ ।

संघर्षरत पक्षहरूले एकपक्षीय रुपमा वा विशेष सम्झौताद्वारा आ-आफ्ना जहाजहरूमा तटस्थ पर्यवेक्षकहरू राख्न सक्नेछन् जसले वर्तमान महासन्धि अन्तरगतका प्रावधानहरूको पालना भए नभएको कडाई साथ यकिन गर्नेछन् ।

## धारा ३२

धाराहरू २२, २४, २५ र २७ मा वर्णित पानी जहाजहरू, तटस्थ बन्दरगाहमा रहेका अवस्थामा युद्धपोतको श्रेणीमा राखिने छैनन् ।

## धारा ३३

अस्पतालयुक्त जहाजहरूमा परिणत गरिएका व्यापारिक पानी जहाजहरूलाई लडाईको अवधिभरी अन्य कुनै पनि काममा प्रयोग गरिने छैन ।

## धारा ३४

अस्पतालयुक्त जहाजहरू र बिरामी राख्ने कोठाहरूलाई तिनीहरूको मानवीय सेवाको दायराभन्दा बाहिर गई शत्रुलाई हानि हुने कार्यहरूमा प्रयोग नगरेसम्म तिनीहरूलाई प्राप्त संरक्षण समाप्त हुने छैन । तर सबै उपयुक्त अवस्थाहरूमा उचित समय सीमा तोकेर समुचित चेतावनी दिएपछि र यस्तो चेतावनीलाई वास्ता नगरेपछि मात्र, संरक्षण समाप्त गरिनेछ ।

खास गरेर अस्पतालयुक्त जहाजहरूले आफ्नो संचारका बेतार वा अन्य साधनहरूका लागि गोप्य सांकेतिक लिपी राख्न वा प्रयोग गर्न सक्ने छैनन् ।

## धारा ३५

देहायका अवस्थाहरूलाई अस्पतालयुक्त जहाजहरू वा पानी जहाजका बिरामी राख्ने कोठाहरूले पाउनु पर्ने संरक्षणबाट बञ्चित गरेको मानिने छैन :-

(१) जहाजको चालकदल वा बिरामी राख्ने कोठाहरूको सुव्यवस्था बनाई राख्नको लागि, आफ्नै सुरक्षाका लागि वा बिरामी र घाइतेहरूको सुरक्षाका लागि हातहतियारयुक्त भएको अवस्था ।

(२) नौपरिवहन वा संचारलाई सुविधायुक्त बनाउने एक मात्र प्रयोजनको लागि जहाजमा उपकरणहरूको मौजुदगी ।

(३) घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरूबाट प्राप्त गरिएका र हालसम्म पनि समुचित सेवा एकाईलाई हस्तान्तरण नगरिएका बोक्न सकिने हातहतियार र खरखजाना अस्पतालयुक्त जहाजहरू अथवा बिरामी कोठाहरूमा फेला पर्नु ।

(४) अस्पतालयुक्त जहाजहरूका र पानी जहाजहरूका बिरामी कोठाहरूको वा चालकदलको मानवीय काम कारवाही घाइते, बिरामी वा संकटग्रस्त जहाजका आम नागरिकहरूलाई समेत लागू हुन्छ भन्ने तथ्य ।

(५) सामान्य आवश्यकताहरूका अतिरिक्त पूर्णतया औषधोपचार सम्बन्धी कामहरूको लागि उपकरण र कर्मचारीहरूको ओसार-पसार ।

## परिच्छेद ४

## कर्मचारीहरू

### धारा ३६

अस्पतालयुक्त जहाजहरूमा धार्मिक, चिकित्सा सम्बन्धी र अस्पतालका कर्मचारीहरू र तिनका चालकदलका सदस्यलाई सम्मान र संरक्षण गरिनेछ । जहाजमा घाइते वा बिरामी भए वा नभए पनि अस्पतालयुक्त जहाजको सेवामा रहेको समयमा तिनीहरूलाई पक्राउ गर्न सकिने छैन ।

### धारा ३७

धाराहरू १२ र १३ मा तोकिएका मानिसहरूको चिकित्सा सम्बन्धी वा आध्यात्मिक हेरचाहका लागि खटाइएका धार्मिक, चिकित्सा सम्बन्धी र अस्पतालका कर्मचारीहरू, यदि शत्रुका हातमा परेमा तिनीहरूलाई सम्मान र सुरक्षा गरिनेछ । घाइते र बिरामीहरूको हेरविचारको लागि आवश्यक भएसम्म तिनीहरू आफ्नो कर्तव्य गरी रहनेछन् । तिनीहरू जुन प्रधान सेनापतिका मातहतमा रहेका छन् उसले व्यवहारिक ठानेपछि, यथाशिघ्र तिनीहरूलाई फिर्ता पठाइनेछ । जहाज छाडेर जाँदा, तिनीहरूले आफ्ना व्यक्तिगत सम्पत्ति आफूसँग लग्न सक्नेछन् ।

तर यदि यी कर्मचारीहरूमध्ये केहीलाई युद्धबन्दीहरूका चिकित्सा सम्बन्धी वा धार्मिक आवश्यकताहरूको कारणले राखी राख्न आवश्यक देखिएमा, तिनीहरूको छिटोभन्दा छिटो अवतरणको लागि हर सम्भव प्रयास गरिनेछ ।

कायमै राखिएका कर्मचारीहरू भूमिमा अवतरण गरेपछि, युद्ध मैदानमा घाइते र बिरामी भएका सैनिकहरूको अवस्था सुधार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धिका प्रावधानहरूको अधीन रहने छन् ।

## परिच्छेद ५

## चिकित्सा सम्बन्धी यातायात

### धारा ३८

खास प्रयोजनका लागि भाडामा लिइएका जहाजहरूलाई, यदि तिनीहरूको समुद्री यात्रा सम्बन्धी विवरणहरूबारे विपक्षी शक्तिलाई सूचित गरिएको रहेछ र निजबाट सोको लागि स्वीकृति प्राप्त भैसकेको रहेछ भने, पूर्णरुपमा सशस्त्र सेनाका घाइते र बिरामीहरूको उपचारको लागि वा रोगको रोकथामको लागि मात्र चाहिने उपकरणहरूको ढुवानी गर्ने अख्तियारी प्रदान गरिनेछ । विपक्षी शक्तिलाई यस्ता बाहक जहाजहरूमा चढ्न पाउने अधिकार सुरक्षित रहने छ तर तिनलाई कब्जामा लिने वा ढुवानी गरिएका उपकरणहरू जफत गर्ने अधिकार हुनेछैन ।

ढुवानी गरिएका उपकरणहरूको सत्यता जाँच गर्न यस्ता जहाजहरूमा, संघर्षरत पक्षहरूको सहमतिद्वारा तटस्थ पर्यवेक्षकहरू राख्न सकिन्छ । यस प्रयोजनको लागि उपकरणसम्म निर्बाध पहुँच प्रदान गरिनेछ ।

### धारा ३९

चिकित्सा विमान अर्थात घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरूलाई ओसार्न र चिकित्सा कर्मचारीहरू र उपकरणको ढुवानीका लागि पूर्णतया प्रयोग गरिएको विमान आक्रमणको लक्ष्य हुन सक्नेछैन । बरु सम्बन्धित संघर्षरत पक्षहरूबीच विशेष रुपमा सहमति भएका उचाइमा, समयहरूमा र बाटोहरूमा उडान भर्दा, त्यस्ता विमानलाई संघर्षरत पक्षहरूबाट सम्मान गरिनेछ ।

धारा ४१ मा तोकिएको विशिष्ट चिन्हका साथै तिनीहरूका राष्ट्रिय झण्डा विमानको तल्लो, माथिल्लो र दायाँबायाँका सतहमा प्रष्ट रुपमा चिन्हित गरिनेछ । लडाइँको शुरुवात भएपछि वा लडाइँको अवधिमा संघर्षरत पक्षहरूका बीच सहमति भएअनुसार तिनीहरूलाई अन्य कुनै चिन्हहरू वा पहिचान गर्न साधन प्रदान गरिनेछ ।

अन्यथा सहमति भएमा बाहेक शत्रुको वा शत्रुद्वारा कब्जा गरिएको भू-भागमाथि उडान निषेधित हुन्छ ।

चिकित्सा विमानले भूमि वा जलमा अवतरण गर्न भनी दिइएको हरेक आदेशलाई पालना गर्नेछ । यसरी अवतरण गर्नु परेमा, कुनै जाँच गर्नुपर्ने भएमा, जाँचपछि सो विमानले आफ्ना यात्रुहरूका साथ आफ्नो उडान जारी राख्न सक्नेछ ।

शत्रुको वा शत्रुद्वारा कब्जा गरिएको भू-भागको थल वा जलमा अनिच्छापूर्वक अवतरण गर्नु परेको अवस्थामा घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरूका साथै, विमान चालक दल युद्धबन्दी हुनेछन् । चिकित्सा कर्मचारीहरूलाई धाराहरू ३६ र ३७ अनुसार व्यवहार गरिनेछ ।

## धारा ४०

दोस्रो प्रकरणको अधीन रही संघर्षरत पक्षहरूको चिकित्सा विमानहरू तटस्थ राष्ट्रहरूको भू-भाग माथिबाट उडान भर्न सक्नेछन्, आवश्यक परेको खण्डमा त्यहाँ अवतरण गर्न सक्नेछन् वा त्यसलाई अस्थायी विश्राम स्थलको रुपमा प्रयोग गर्न सक्नेछन् । तिनीहरूले तटस्थ राष्ट्रहरूलाई उल्लिखित भू-भागको माथिबाट गरिने आफ्ना उडानहरूबारे पूर्व सूचना दिनेछन् र थल वा जलमा अवतरण गर्न भनी दिइएको हरेक आदेशलाई पालना गर्ने छन् । संघर्षरत पक्षहरू र सम्बन्धित तटस्थ राष्ट्रबीच विशेष रुपमा सहमति भएका मार्गहरूमा, उचाईमा र समयहरूमा उडान गर्दा मात्र तिनीहरूले आक्रमणबाट उन्मुक्ति पाउनेछन् ।

तर, तटस्थ राष्ट्रहरूले तिनीहरूका भू-भागमाथि चिकित्सा विमानको उडान वा अवतरण माथि शर्तहरू वा बन्देजहरू लगाउन सक्नेछन् । यस्ता सशर्तहरू वा बन्देजहरू संघर्षरत सबै पक्षहरूलाई समान रुपमा लागू हुनेछन् ।

तटस्थ राष्ट्रहरू र संघर्षरत पक्षहरू बीच अन्यथा सहमति भएको अवस्थामा बाहेक, चिकित्सा विमानद्वारा तटस्थ राज्य क्षेत्रमा स्थानीय पदाधिकारीहरूको सहमतिबाट ओरालिएका घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरूलाई अन्तर्राष्ट्रिय कानुनद्वारा त्यसो गर्न आवश्यक भएको देखिएमा तिनीहरू युद्धको काम कारवाहीमा पुनः भाग लिन नसक्ने तरीकाबाट तटस्थ राष्ट्रद्वारा नजरबन्द अवस्थामा राखिनेछन् । तिनीहरूको बसोबास र नजरबन्दमा राख्दा लागेको खर्च, तिनीहरू आश्रित रहेको राष्ट्रले व्यहोर्नेछ ।

## परिच्छेद ६

## स्पष्ट निशान चिन्ह

## धारा ४१

सक्षम सैनिक पदाधिकारीको निर्देशन अन्तर्गत सेतो पृष्ठभूमिमा रेडक्रसको चिन्हलाई झण्डामा, पाखुरामा लगाउने पट्टा (आर्मलेट) र चिकित्सा सेवामा प्रयोग गरिएका सबै उपकरणहरूमा प्रयोग गरिनेछ ।

तथापि सेतो पृष्ठभूमिमा रातो अर्धचन्द्र वा रातो सिंह र सूर्यलाई रेडक्रसको ठाउँमा चिन्हको रुपमा पहिले देखिने प्रयोग गरी रहेका राष्ट्रहरूको हकमा, ती चिन्हहरूलाई प्रस्तुत महासन्धिका व्यवस्था बमोजिम मान्यता दिइएको छ ।

## धारा ४२

धाराहरू ३६ र ३७ मा तोकिएका कर्मचारीहरूले सैनिक पदाधिकारीबाट जारी गरिएको र छाप लगाइएको स्पष्ट चिन्ह भएको एउटा पानीले नभिज्ने पट्टा आफ्नो बायाँ पाखुरामा धारण गर्नेछन् ।

धारा १९ मा उल्लिखित परिचय बिल्ला (डिस्क) लाई धारण गर्नु बाहेक यस्ता कर्मचारीहरूले स्पष्ट चिन्ह अंकित, एउटा विशेष परिचयपत्र पनि बोक्नेछन् । यो परिचपत्र पानीले नभिज्ने र खल्तीमा बोक्न सकिने आकारको हुनेछ । यसमा राष्ट्र भाषामा कम्तिमा बाहकको नाम, थर, जन्ममिति, दर्जा र सेवा संख्या लेखिएको हुनुपर्छ र कुन हैसियतमा वर्तमान महासन्धिअन्तर्गत संरक्षण प्राप्त गर्नको लागि ऊ हकदार छ भन्ने समेत खुलेको हुनुपर्छ । परिचयपत्रमा बाहकको फोटो र उसको दस्तखत वा बुढी औंलाका छापहरू वा दुबै अंकित हुनुपर्छ । यसमा सैनिक पदाधिकारीको छापको उठेको आकार अंकित हुनुपर्छ ।

परिचयपत्र एउटै सशस्त्र सेनाभित्र एकैखालको सम्भव भएसम्म उच्च संविदाकारी पक्षहरूका सशस्त्र सेनाहरूको बीच पनि एकै किसिमको हुनुपर्छ । प्रस्तुत महासन्धिको अनुसूचीमा उदाहरण स्वरुप संलग्न नमूनाबाट संघर्षरत पक्षहरू निर्देशित हुन सक्नेछन् । लडाईंको शुरुमा नै तिनीहरूले प्रयोग गरिरहेका नमूनाबारे एक अर्कालाई सूचित गर्नेछन् । सम्भव भए, परिचयपत्र कम्तिमा दुईप्रति बनाउनुपर्छ जसको एक प्रति गृह राष्ट्रले रोखको हुनुपर्छ ।

कुनै पनि परिस्थितिमा उल्लिखित कर्मचारीहरूलाई तिनीहरूको अधिकार चिन्ह वा परिचयपत्रबाट बञ्चित गरिने छैन न त उनीहरूलाई पाखुरामा लाउने पट्टा धारण गर्नबाट रोकिनेछ । परिचयपत्र हराएको खण्डमा तिनीहरूलाई त्यसको प्रतिलिपि प्राप्त गर्ने र अधिकार चिन्हको सट्टा अर्को अधिकार चिन्ह पाउने हक हुनेछ ।

## धारा ४३

धाराहरू २२, २४, २५ र २७ मा तोकिएका जहाजहरूलाई देहाय बमोजिम प्रष्ट रुपमा चिन्हित गरिनेछ :-

(क) सम्पूर्ण बाहिरी भाग सेतो हुनेछ ।

(ख) जहाजको बाहिरी भागको सबैतिर र समतल सतहहरूमा सम्भव भएसम्म ठूलो आकारको एक वा सोभन्दा बढी गाढा रंगमा रेडक्रस चिन्हरू चित्रित र प्रदर्शित गरिएको हुनुपर्छ यस्ता चिन्हहरू समुद्र र आकाशबाट सम्भव भएसम्म बढी मात्रामा दृष्टिगोचर हुने किसिमले राखेको हुनुपर्छ ।

अस्पतालयुक्त सबै जहाजहरू आ-आफ्ना राष्ट्रिय झण्डा र सोको अतिरिक्त यदि तिनीहरू तटस्थ राष्ट्रको मातहतको भएमा तिनीहरूले संघर्षरत पक्षहरूमध्ये जुन राष्ट्रको निर्देशन स्वीकार गरेका छन् । सोही राष्ट्रको झण्डा फहराएर आफूलाई परिचित गराउने छन् । रेडक्रस भएको एउटा सेतो झण्डा जति सक्दो उचाइमा जहाजको मुख्य मस्तुलमाथि फहराउनु पर्नेछ ।

अस्पतालयुक्त जहाजहरूका जीवन रक्षक नौकाहरू, तटवर्ती जीवन रक्षक नौकाहरू र चिकित्सा सेवाद्वारा प्रयोग गरिएका सबै साना जहाजहरूमा, सेतो पृष्ठभूमिमा गाढा रेडक्रस चिन्ह प्रष्ट रुपमा देखिने गरी अंकित गरिनेछ र सामान्यतया अस्पतालयुक्त जहाजहरूले माथि तोकिएको पहिचान गर्ने पद्धतिलाई पालना गर्नेछन् ।

माथि उल्लिखित पानी जहाजहरू र साना जहाजहरूले रातमा र देखिने स्थितिमा कमी आएको समयमा, आफूहरू सुरक्षित हुनुपर्ने हक सुनिश्चित गर्न तिनीहरू संघर्षरत जुन पक्षको अधीनस्थ छन् उसको सहमतिको अधीन रही जहाजको रंग रोगन र विशिष्ट चिन्हलाई यथेष्ट रुपमा प्रष्ट देखिने बनाउनका लागि आवश्यक उपायहरू गर्नेछन् ।

धारा ३१ अनुसार शत्रुद्वारा अस्थायी रुपमा रोकिएका अस्पतालयुक्त जहाजहरूले, संघर्षरत पक्षहरूमध्ये जुनपक्षको सेवामा रहेका छन् वा जसको निर्देशन स्वीकार गरेकाछन्, त्यसको झण्डा झिक्नुपर्छ ।

यदि तटवर्ती जीवन रक्षक नौकाहरू कब्जामा परेको कुनै आधार स्थलबाट कब्जा गर्ने शक्तिको सहमतिले संचालन भईरहेका रहेछन् भने आफ्नो आधार स्थलबाट टाढा भएको बेला संघर्षरत सबै पक्षहरूलाई पूर्व सूचना दिने शर्तमा, तिनीहरूलाई सेतो पृष्ठभूमिमा रेडक्रस चिन्ह भएको झण्डाका साथै आफ्नो राष्ट्रिय झण्डा समेत फहराई राख्न अनुमति दिन सकिनेछ ।

रेडक्रससँग सम्बन्धित यस धाराका सबै व्यवस्थाहरू धारा ४१ मा उल्लिखित यस चिन्हरूको हकमा समेत समान रुपमा लागू हुनेछन् ।

संघर्षरत पक्षहरूले अस्पतालयुक्त जहाजहरूको पहिचानलाई सहज बनाउन उपलब्ध रहेका अत्यन्त आधुनिक पद्धतिहरूलाई प्रयोग गर्न पारस्परिक सम्झौताहरू गर्न सदैव प्रयास गर्नेछन् ।

## धारा ४४

अन्य कुनै अन्तर्राष्ट्रिय महासन्धिमा व्यवस्था भएमा वा संघर्षका सम्बन्धित सबै पक्षहरूका बीच सम्झौता भएमा बाहेक धारा ४३ मा वर्णित फरक छुट्याउने चिन्हहरूलाई शान्ति वा युद्धको समयमा त्यसमा उल्लिखित जहाजहरूलाई औंल्याउन वा संरक्षण गर्नको लागि मात्र प्रयोग गर्न सकिनेछ ।

## धारा ४५

उच्च संविदाकारी पक्षहरूले यदि तिनीहरूको कानुन पहिलेनै पर्याप्त नभएमा धारा ४३ अन्तरगत व्यवस्था गरिएका विशिष्ट चिन्हहरूको हुन सक्ने दुरुपयोगलाई हर हमेशा निषेध र निरोध गर्न आवश्यक पर्ने उपायहरू गर्नेछन् ।

## परिच्छेद ७

## महासन्धिको कार्यान्वयन

## धारा ४६

संघर्षरत हरेक पक्षले आफ्नो सेवाध्यक्षको माध्यमबाट पूर्ववर्ती धाराहरूको विस्तृत कार्यान्वयन सुनिश्चित गर्नेछन् र पूर्वानुमान नगरिएका विषयबारे प्रस्तुत महासन्धिका सामान्य सिद्धान्तहरूसँग मिल्ने गरी व्यवस्था गर्नेछन् ।

## धारा ४७

महासन्धिद्वारा संरक्षित घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरू, कर्मचारीहरू, पानी जहाजहरू वा उपकरणहरूका विरुद्ध प्रतिशोधात्मक कारवाही गर्न प्रतिबन्धित गरिएको छ ।

## धारा ४८

उच्च संविदाकारी पक्षहरूले युद्धको समयमा जस्तै शान्तिको समयमा पनि यो महासन्धिको मूलपाठलाई आ-आफ्ना देशहरूमा सम्भव भएसम्म व्यापक रुपमा प्रचार-प्रसार गर्ने र विशेष गरेर आफ्ना सैनिक प्रशिक्षण कार्यक्रम र सम्भव भए नागरिक प्रशिक्षणमा समेत समावेश गर्न संकल्प गर्छन् ताकि त्यसका सम्बन्धित सिद्धान्तहरूबारे सम्पूर्ण नागरिकलाई खास गरेर सशस्त्र युद्धरत सेना, चिकित्सा कर्मचारीहरू र धार्मिक पूजारीहरूलाई, जानकारी हुन सकोस् ।

## धारा ४९

उच्च संविदाकारी पक्षहरूले प्रस्तुत महासन्धिका आधिकारिक अनुवादहरू र तिनको प्रयोगलाई सुनिश्चित गर्न तिनीहरूले अपनाएका कानुन र नियमहरूबारे एक अर्कालाई स्वीस संघीय परिषद मार्फत र लडाईंको समयमा संरक्षक शक्तिहरू मार्फत अवगत गराउनेछन् ।

## परिच्छेद ८

## दुरुपयोग र उल्लंघनको नियन्त्रण

## धारा ५०

उच्च संविदाकारी पक्षहरूले तलका धारामा परिभाषित प्रस्तुत महासन्धिका गम्भीर उल्लंघनहरू गर्ने वा गर्न आदेश दिने व्यक्तिहरू उपर प्रभावकारी दण्ड व्यवस्था गर्नका लागि आवश्यक पर्ने कुनै पनि कानुन बनाउन संकल्प गर्दछन् ।

यस्ता गम्भीर उल्लंघन गरेका वा गर्न आदेश दिएका भनी दोषारोपण गरिएका मानिसहरूको खोजी गर्ने र तिनीहरू जुनसुकै राष्ट्रियता भए पनि त्यस्ता मानिसहरूलाई आफ्नो अदालतहरू समक्ष ल्याउने दायित्व हरेक उच्च संविदाकारी पक्षको हुनेछ । यसले आफूलाई इच्छा भएमा र आफ्नै कानुनका अनुसार यस्ता व्यक्तिहरूलाई यदि अर्को उच्च संविदाकारी पक्षले अभियोग स्थापित हुने प्रथम दृष्टिमा विश्वास लाग्ने सबुद पेश गरेमा त्यस्तो उच्च संविदाकारी पक्षलाई पूर्पक्षको लागि सुम्पन पनि सक्नेछ ।

प्रत्येक उच्च संविदाकारी पक्षले तलको धारामा परिभाषित गम्भीर उल्लंघन बाहेक यो महासन्धिका प्रावधानहरूका विपरित गरिने सम्पूर्ण कार्यहरूलाई दबाउन आवश्यक कदमहरू चाल्नेछ ।

सबै परिस्थितिमा आरोपित व्यक्तिहरू समुचित सुनुवाई र प्रतिरक्षा जस्ता सुरक्षा उपायहरूबाट लाभान्वित हुने छन् जुन युद्धबन्दीहरूलाई गरिने व्यवहार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धिको धारा १०५ र त्यसपछिका धाराहरूले गरेका व्यवस्थाहरूभन्दा कम अनुकूल हुने छैनन् ।

## धारा ५१

पूर्ववर्ती धारासँग सम्बन्धित गम्भीर उल्लंघनहरू भन्नाले महासन्धिद्वारा संरक्षित व्यक्तिहरू वा सम्पत्तिका विरुद्ध भएका देहायका कुनै कार्यहरू हुनेछन् :-

सैनिक आवश्यकताले जायज नदेखिएका गैरकानुनी रुपमा जथाभावी गरिएका सम्पत्तिको व्यापक क्षति तथा कब्जा, जैविक परीक्षण लगायत मनसायपूर्ण हत्या, यातना वा अमानवीय व्यवहार, शरीर वा स्वास्थ्यमा मनसायपूर्वक गम्भीर कष्ट पु¥याउनु वा गम्भीर हानी पु¥याउनु ।

## धारा ५२

कुनै पनि उच्च संविदाकारी पक्षलाई पूर्ववर्ती धारामा उल्लिखित उल्लंघनहरूको हकमा आफैले वा अन्य उच्च संविदाकारी पक्षले व्यहोर्नु पर्ने दायित्वबाट आफूलाई वा अन्य उच्च संविदाकारी पक्षलाई मुक्त गर्न अनुमति दिइनेछैन ।

## धारा ५३

संघर्षरत कुनै पक्षको अनुरोधमा महासन्धिको आरोपित उल्लंघनबारे सम्बन्धित पक्षहरूले गरेको निर्णय मुताविक छानविन गरिनेछ ।

यदि जाँचबुझको कार्यविधिको हकमा सहमति भइसकेको छैन भने पक्षहरूले एउटा निर्णायकको छनौट बारेमा सहमत जनाउनु पर्नेछ, जसले के कस्तो कार्यविधि अनुशरण गर्ने भन्ने बारेमा निर्णय गर्नेछ ।

उल्लंघन भएको स्थापित हुनासाथ संघर्षरत पक्षहरूले यसलाई अन्त्य गर्नेछन् र सम्भव भएसम्म कम विलम्ब हुने गरी यसलाई नियन्त्रण गर्नेछन् ।

## अन्तिम प्रावधानहरू

## धारा ५४

यो महासन्धि अंग्रेजी र फ्रान्सेली भाषाहरूमा सम्पन्न गरिएको छ । दुबै मूल पाठहरू समान रुपमा आधिकारिक हुनेछन् ।

स्वीस संघीय परिषदले यस महासन्धिको रसियाली र स्पेनी भाषाहरूमा आधिकारिक उल्थाको लागि व्यवस्था गर्नेछ ।

## धारा ५५

यो महासन्धि, जसमा आजको तारिख रहनेछ, १९०६ को जेनेभा महासन्धिका सामुद्रिक युद्ध कार्यका सिद्धान्तहरू वा  लडाइँको मैदानमा रहेका सेनाका घाइते र बिरामीहरूको उद्धारसम्बन्धी १८६४, १९०६ वा १९२९ का जेनेभा महासन्धिहरूलाई अनुकुल बनाउनका लागि जेनेभामा सन् १९४९ को २१ अप्रिलमा प्रारम्भ भएको सम्मेलनमा प्रतिनिधित्व गर्ने शक्ति राष्ट्रहरूका नाममा र

यसका अतिरिक्त यस सम्मेलनका सहभागी नभएका तर १८ अक्टुवर १९०७ को दशौं हेग महासन्धिका पक्ष रहेका राष्ट्रहरूद्वारा हस्ताक्षर गर्नको लागि १२ फरवरी १९५० सम्म खुला हुनेछ ।

## धारा ५६

यो महासन्धि जति सक्दो चाँडो अनुमोदन गरिनेछ र अनुमोदनहरूलाई वर्नमा दाखिला गरिनेछ ।

अनुमोदनको हरेक लिखत दाखिला गरेको अभिलेख खडा गरिनेछ र स्वीस संघीय परिषदद्वारा यस अभिलेखका प्रमाणित प्रतिलिपिहरू ती सम्पूर्ण शक्ति राष्ट्रहरूलाई पठाइनेछ जसका नाममा महासन्धि हस्ताक्षरित भएको छ वा जसले सम्मिलनबारे सूचित गरेको छ ।

## धारा ५७

यो महासन्धि कम्तिमा दुई ओटा अनुमोदनका लिखतहरू दाखिला भएको ६ महिनापछि लागू हुनेछ । त्यसपछि हरेक उच्च संविदाधारी पक्षको हकमा अनुमोदनका लिखतहरू दाखिला गरेको ६ महिनापछि यो लागू हुनेछ ।

## धारा ५८

उच्च संविदाकारी पक्षहरूको हकमा यो महासन्धिले १९०६ को जेनेभा महासन्धिका सामुद्रिक युद्धकलाका सिद्धान्तहरूको अनुकुल बनाउनका लागि भएको १८ अक्टुवर, १९०७ को दशौं हेग महासन्धिलाई प्रतिस्थापित गरेको छ ।

## धारा ५९

यो महासन्धि लागू भएको मितिदेखि यसमा हस्ताक्षर नगरेका कुनै पनि राष्ट्रको हकमा सम्मिलनको लागि खुला रहनेछ ।

## धारा ६०

सम्मिलनहरूबारे लिखित रुपमा स्वीस संघीय परिषदलाई सूचित गरिनेछ र तिनीहरू प्राप्त भएको मितिबाट ६ महिनापछि लागू हुनेछन् ।

स्वीस संघीय परिषदले ती सबै राष्ट्रहरूलाई, जसको नाममा महासन्धिमा हस्ताक्षर गरिएको छ वा जसले गरेको सम्मिलनबारे सूचित गरेको छ, त्यस्तालाई सम्मिलनहरूबारे जानकारी गराउनेछ ।

## धारा ६१

धाराहरू २ र ३ मा व्यवस्थित परिस्थितिहरूले लडाईहरूको वा कब्जाको प्रारम्भ हुनुभन्दा अगाडि वा पछाडी संघर्षरत पक्षहरूले दाखिला गरेका अनुमोदनहरू वा सूचित गरिएका सम्मिलनहरूलाई तत्काल प्रभावी बनाउने छन् । स्वीस संघीय परिषदले संघर्षरत पक्षहरूबाट प्राप्त कुनै पनि अनुमोदनहरू वा सम्मिलनहरूबारे सर्वाधिक छिटो माध्यमबाट जानकारी गराउनेछ।

## धारा ६२

प्रत्येक उच्च संविदाकारी पक्षलाई यो महासन्धिलाई परित्याग गर्ने स्वतन्त्रता हुनेछ।

स्वीस संघीय परिषदलाई परित्यागबारे लिखित सूचना दिइनेछ जसले यसबारे सम्पूर्ण उच्च संविदाकारी पक्षका सरकारहरूलाई खबर गर्नेछ।

स्वीस संघीय परिषदलाई परित्यागबारे सूचित गरेको एक वर्षपछि यो लागू हुनेछ । तर, कुनै परित्याग गर्ने शक्ति राष्ट्र संघर्षमा संलग्न रहेको अवस्थामा परित्याग बारे सूचना पठाएको रहेछ भने पनि त्यस्तो परित्याग शान्ति कायम नभएसम्म र यो महासन्धिद्वारा संरक्षित व्यक्तिहरूलाई मुक्त गर्ने र स्वदेश फर्काउने सम्बन्धी कारवाहीहरू पूरा नभएसम्म लागू हुनेछैन ।

परित्याग गर्ने शक्तिको हकमा मात्र परित्याग लागू हुनेछ । यसले कुनै पनि किसिमबाट अन्तर्राष्ट्रिय कानुनका सिद्धान्तअनुसार संघर्षरत पक्षहरूले पूरा गर्न बाध्य भएका दायित्वलाई कम गर्नेछैन । किनभने ती सभ्य जनताहरूका बीच स्थापित प्रथाहरू, मानवताका कानुनहरू र सार्वजनिक सद्विवेकका निर्देशहरूबाट निःसृत भएका हुन्छन् ।

## धारा ६३

स्वीस संघीय परिषदले प्रस्तुत महासन्धिलाई संयुक्त राष्ट्र संघको सचिवालयमा दर्ता गराउनेछ । स्वीस संघीय परिषदले संयुक्त राष्ट्र संघको सचिवालयलाई समेत प्रस्तुत महासन्धिको सम्बन्धमा परिषदलाई प्राप्त भएका सबै अनुमोदनहरू, सम्मिलनहरू र परित्यागहरूबारे सूचना दिनेछ ।

यसका साक्षीको रुपमा अधोहस्ताक्षरीहरूले आ-आफ्नो पूर्ण अधिकारपत्रहरू दाखिला गरेर यो महासन्धिमा हस्ताक्षर गरेकाछन् ।

१२ अगस्त, १९४९ का दिन जेनेभामा अंग्रेजी र फ्रान्सेली भाषामा सम्पन्न भयो । मूलप्रति स्वीस महासंघको अभिलेखालयमा दाखिला गरिनेछ । स्वीस संघीय परिषदले त्यसको प्रमाणित प्रतिलिपिहरू प्रत्येक हस्ताक्षरकर्ता र सम्मिलनकर्ता राष्ट्रहरूलाई प्रेषित गर्नेछ ।

# अनुसूची

समुद्रमा रहेका सशस्त्र बलका चिकित्सकीय तथा धार्मिक कर्मचारी सदस्यहरूको निम्ति परिचय पत्र

<table>
<tr><td>

परिचय पत्र जारी गर्ने देश र सैनिक अधिकारीको<br>नामका लागि आरक्षित ठाउँ

समुद्रमा रहेका सेनासँग आवद्ध चिकित्सा वा धार्मिक वर्गका सदस्यहरूका लागि

**परिचय-पत्र**

थर : ..................................................

पहिलो नाम : ........................................

जन्म मिति : ........................................

तह/दर्जा : ........................................

सैनिक नम्बर : ......................................

यो परिचयपत्रको बाहक समुद्रमा सशस्त्र सेनाका घाइते, बिरामी र संकटग्रस्त जहाजका मानिसहरूको अवस्था सुधारसम्बन्धी १२ अगष्ट, १९४९ को जेनेभा महासन्धिद्वारा देहायको हैसियतमा संरक्षित छ :- ..................................................................................

जारी भएको मिति              परिचय पत्र

संख्या

</td></tr>
</table>

**पृष्ट भाग**

<table>
<tr><td colspan="3">बाहकको फोटो<br><br>बाहकको हस्ताक्षर वा ल्याप्चे छाप वा दुबै<br><br>परिचय पत्र जारी गर्ने सैनिक अधिकारीका</td></tr>
<tr><td>उचाइ<br>..................</td><td>आँखाको रंग<br>..........................</td><td>कपालको रंग<br>........................</td></tr>
<tr><td colspan="3">अन्य परिचयात्मक चिन्हहरू<br>........................................................................................................................<br>........................................................................................................................<br>.......................................................................................................................</td></tr>
</table>